# द जर्नालिस्ट

## फोनिज युके स्मारिका

## सन् २०१७

**सम्पादक**
प्रमिला लाबुङ राई
पूर्ण गुरुङ

**नेपाल सम्पादक**
देवेन्द्र सुर्केली

**सल्लाहकार सम्पादक**
विश्वासदीप तिगेला

**फोटो पत्रकार**
मिलन तमू

E-mail: fonijuk@gmail.com
Website: fonijuk.org

# प्रेस काउन्सिल नेपाल

(........................ शाखा)

सञ्चारग्राम, तिलगङ्गा, काठमाडौं

प.सं.

च.नं.


२०७४/४/२९

## शुभ कामना

नेपाल आदिवासी जनजाति पत्रकार महासंघ (फोनिज) यूके शाखाको स्मारिका 'द जर्नालिष्ट' प्रकाशनको शुभकामना दिन चाहान्छु । पत्रकारिता आवाज विहीनहरुको आवाज हो । आदिवासी जनजाति पत्रकारहरुले यहि सिद्धान्तको अनुसरण गर्नुपर्छ । नेपालका राष्ट्रिय समुदायको मुक्तिको आवाज उठाउन आदिवासी जनजाति पत्रकारहरु संगठित संस्था फोनिजको उद्वेश्य अनुकुल लक्ष्यमुखि पत्रकारिता गर्नु आजको अभियान हुनुसकोस ।

विदेशमा बसेर मातृभूमिका आदिम राष्ट्रिय समुदायको हित चिताउने पत्रकारिता गर्नुलाई मुक्त कण्ठले प्रशंसा गर्न चाहान्छु । जनजीविकाको सिलसिलासंगै देशभक्तिको यो अभियान कहिल्यै नथाकोस । नोगेन ति सबै कलमबाजहरुलाई ।

भवानी बराल

अध्यक्ष

प्रेस काउन्सिल नेपाल


पो.ब.नं. ३०७७, फोन नं. ४११२६७८, ४११२७९९, फ्याक्स नं. ४११२६९४

Website: presscouncilnepal.org, इमेल: prescoun_mdf@wlink.com.np, Audio Notice Board No : 1618014112678

**नेपाल आदिवासी जनजाति पत्रकार महासंघ (फोनिज)**
**Federation of Nepalese Indigenous Nationalities Journalists' (FoNIJ)**
**Central Committee**

मिति : ३२ साउन, २०७४

# शुभकामना

नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ (फोनिज) युके शाखाको दोस्रो अधिवेशनको अवसरमा 'द जर्नालिष्ट' नामक स्मारिका प्रकाशन गर्न लागेको जानकारी पाउँदा अत्यन्त खुशी लागेको छ । यो अवसरमा फोनिज युकेका सम्पूर्ण टिमलाई शुभकामना र बधाई दिन चाहन्छौं ।

आदिवासी जनजाति कुलमा जन्मिएर पत्रकारिता पेशामा क्रियाशील सञ्चारकर्मीहरूको साझा संस्था फोनिजले सञ्चालन गर्दैआएको पूर्ण समावेसी सञ्चार अभियानमा हरसम्भव सघाउँदै आएको फोनिज युकेलाई यो अवसरमा विशेष धन्यवाद दिन चाहन्छौं । फोनिज युकेले युकेमा रहेका आम आदिवासी जनजाति पत्रकारहरूलाई एउटै उद्देश्य र सङ्गठनमा आवद्ध गर्न सफल भएकोमा पनि हामी अत्यन्त गौरवान्वित छौं ।

सामाजिक रुपान्तरण र समृद्धिका लागि आमसञ्चार पूर्ण रूपमा समावेसी हुनैपर्दछ । आमसञ्चार माध्यमले समावेसी चरित्र देखाउन सकेन भने समाज पक्कै पनि समावेसी स्वरुपको हुनसक्दैन । त्यसैले समृद्ध समाजका लागि पूर्ण समावेसी सञ्चार अहिलेको आवश्यकता भएको कुरालाई हामी सबैले मनन गर्न जरुरी छ । अतः फोनिज युकेको दोस्रो अधिवेशन पूर्ण सफलताको हार्दिक शुभकामना प्रकट गर्दछौं ।

................

**डण्ड गुरुङ**
**अध्यक्ष**

मिति : १६ अगस्ट २०१७

# अध्यक्षको मन्तव्य

एक अमेरिकी समाजशास्त्री कवि जिम मोरिसनले भनेका छन्- 'जसले मिडियालाई नियन्त्रण र प्रभावमा राख्छ, उसले जनताको दिमागलाई पनि नियन्त्रणमा राख्छ ।' यो भनाइले सुस्पष्ट पार्छ कि हाम्रा निम्ति मिडिया कति आवश्यक छ ? अर्को कुरा, नेपालका आदिवासी जनजातिलगायत जनताहरूलाई यो भनाइअनुसार मिडियाको प्रभाव कति होला, अनुमान गर्ने कि ?

मोरिसनको भनाइ अझै अपुरो लाग्छ । मिडियाले हाम्रो दिमाग मात्र नियन्त्रण गरेको छैन, नेपालको मिडियाले हामीलाई कालिदास नै बनाएको छ । तर, यसको मूल्याङ्कन कसले र कहिले गर्ने ? यिनै आवश्यकतालाई मनन गर्दै नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ (फोनिज) युकेले आफ्नो स्थापनाको छोटो समयमै केही प्रशंसायोग्य कामहरू गर्दै अघि बढिरहेको सर्वविदितै छ ।

पत्रकारहरूको स्तर वृद्धिका निम्ति विभिन्न तालिम, युकेकै मिडियाहरूसँग अन्तरसंवाद गर्दै गुणात्मकता र सङ्ख्यात्मकतालाई ध्यान दिँदै अघि बढ्ने सिलसिलामा हामी दोस्रो अधिवेशनको संघारमा भित्रिएका छौँ । हाम्रा गतिविधिहरू धेरै यस 'द जर्नालिस्ट' आफैँले बोल्नेछ । यस स्मारिकाका निम्ति योगदान पुऱ्याउनुहुने सबैलाई धन्यवाद दिँदै यो 'द जर्नालिस्ट' सफल होस् । पाठक, शुभचिन्तकहरूको माया र सद्भाव सधैँ प्राप्त हुनेछ भन्ने विश्वास गर्दछु । धन्यवाद !

**विश्वासदीप तिगेला**
**अध्यक्ष**
**फोनिज युके**

# विषय सूची

# फोनिज युकेको सङ्क्षिप्त परिचय

नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ (फोनिज) युकेको गठन सन् ५ मे २०१३ का दिन भएको हो । महासङ्घ भन्नेबित्तिकै यसभित्र धेरै सङ्घहरू अवश्य छन् । राई पत्रकार सङ्घ, लिम्वू पत्रकार सङ्घ, तामाङ सञ्चार समूह, नेवा पत्रकार राष्ट्रिय दवू, थारू पत्रकार सङ्घ, नेपाल आदिवासी




जनजाति पत्रकार सङ्घ, शेर्पा सञ्चार समूह नेपाल, तमू (गुरुङ) सञ्चारकर्मी सङ्घ नेपाल, सुनुवार पत्रकार सङ्घ, मगर आमसञ्चारकर्मी सङ्घ नेपाल र थामी पत्रकार सङ्घसँग सरोकार राख्छ ।

फोनिज युकेलाई फोनिज केन्द्रकै विधानले दिशानिर्देश गर्ने प्रावधान छ । यसको प्रथम अधिवेशन २९ जुन २०१४ मा सम्पन्न भयो र दोस्रो अधिवेशन २८ अगस्ट २०१७ मा हुनेछ । यस फोनिजको मुख्य उद्देश्य भनेको सबैलाई समान हक र अधिकारका निम्ति पत्रकारितामार्फत भूमिका निर्वाह गर्नु हो । कहिले समाचार सम्प्रेषण गरेर, कहिले अन्यायका विरुद्ध पत्रकारिताको मर्मभित्र रही आवाज उठाएर, कहिले सबै समुदायमा पत्रकारिताको महत्व दर्शाई उत्प्रेर

णा दिएर भूमिका निर्वाह गर्नु हो र गर्दै पनि आएको छ ।

यस फोनिज युकेले महत्वपूर्ण योगदान गरेका तर उपेक्षामा पारिएका पत्रकारलाई हौसला र सहयोग गर्ने उद्देश्यले फोनिज युके पत्रकारिता सम्मान तथा पुरस्कार सन् २०१६ देखि प्रदान गर्न सुरु गरेका छौं । पहिलो वर्ष लामो समय पत्रकारितामार्फत योगदान गर्नुभएबापत गोपाल छाङ्छा राईलाई नगदसहित सम्मान र मधेस आन्दोलनमा बहादुरीपूर्वक सही र सत्य समाचार सम्प्रेषण गरेबापत रामविकास चौधरीलाई पुरस्कार प्रदान गरिसकेको छ । त्यस्तैगरी यस वर्ष 'आदिवासी जनजाति आवाज' टेलिभिजन कार्यक्रमका सञ्चालक पत्रकार गणेशमान गुरुङलाई नगदसहित सम्मान र 'समावेशी आवाज' टेलिभिजन कार्यक्रमका सञ्चालक मिलन लिम्बूलाई नगदसहित पुरस्कृत घोषणा गरेको छ ।

यस फोनिजले बेलाबखत पत्रकारिता तालिमहरू पनि सञ्चालन गर्दै आएको छ । सामान्य पत्रकारितामा इच्छा गर्नेहरूलाई तालिम दिएर स्तरीय पत्रकार बनाउने, समाजलाई मिडियासँग मित्रवत् बनाउने, मिडियामाथि लगानीमा प्रोत्साहन गर्ने, यथासम्भव धेरै सदस्य बनाउने, सभ्य र स्वस्थ पत्रकारिताबाट समाजमा सहिष्णुता कायम गर्ने लक्ष्य लिएको छ । र, फोनिज केन्द्रको उद्देश्यमा सहयोग पुऱ्याउने काम पनि गर्दै आएको छ । हालसम्म यस फोनिज युकेका साधारण सदस्य ४२ जना रहेका छन् भने केही सदस्यहरू युकेको मिडियामै उच्च शिक्षा हासिल गरेका र मिडियामै विद्यावारिधि गर्नुभएकाहरूसमेत यस फोनिजमा आबद्ध हुनुहुन्छ । यसले हामी हरेक दृष्टिबाट सबल र सक्षम बन्दै गएका छौं भन्ने आभास हुन्छ । अझै भविष्यमा हाम्रा उद्देश्यप्राप्तिका निम्ति कटिबद्ध भई सङ्गठित रूपमा अघि बढ्ने उत्साहका साथ सबैलाई यस पत्रकार महासङ्घ (फोनिज)मा आबद्ध भई दिन आह्वान गर्दछ ।

# पत्रकारितामा आदिवासी जनजातिको सहभागिता किन ?

**– नरेश खपाङ्गीमगर**



नेपालमा लामो समयसम्म सुषुप्त अवस्थामा रहेको आदिवासी जनजाति समुदायको आन्दोलनले वि.सं. २०४६ जनआन्दोलनपछि मुखर हुने मौका पायो । त्यस्तै २०६-२६३ को आन्दोलनसम्म आइपुग्दा यो आन्दोलन मुलुकको ज्वलन्त सवालहरूमध्ये एक हुन पुग्यो । आदिवासी जनजातिका सवालकै कारण पहिलो संविधानसभा संविधान जारी गर्न नसकी भङ्ग गराइयो । त्यसयता आदिवासी जनजाति समुदायलाई राज्यको सङ्घीय संरचनामा कसरी प्रतिनिधित्व गराउने भन्ने मुद्दाकै वरिपरि मुलुक घुमिरहेको छ ।

राज्यको मूलप्रवाहमा नसमेटिएका राजनीतिक, आर्थिक, सामाजिक, धार्मिक, सांस्कृतिक बहिष्करणमा पारिएका समुदाय आदिवासी जनजातिहरू हुन् । उनीहरूको वर्तमान राज्य संरचनामा अनादिकालदेखि बसोबास रहेको छ । आफ्नै परम्परा, रीतिरिवाज, पहिरन,भाषा, संस्कृति यस्तो समुदायको हुन्छ । नेपालको सन्दर्भमा सरकारले नै ऐनमार्फतको आदिवासी जनजाति भन्ने किटान गरिसकेकाले आदिवासी जनजातिका बारेमा अन्योल छैन । समग्र जनसङ्ख्यामा एकतिहाइ हिस्सा ओगटेका आदिवासी जनजातिहरू राज्यको कुनै पनि निकाय र संयन्त्रमा उल्लेख्य सहभागिता छैन । यही नै नेपालको हालको प्रधान अन्तरविरोध हो । राज्यको तीन प्रमुख अङ्ग न्यायपालिका, कार्यपालिका र व्यवस्थापिकापछि चौथो अङ्गका रूपमा पत्रकारिताको स्थान आउँछ । तथापि, यो अरू तीन अङ्गजस्तो संवैधानिक व्यवस्था दिइएको अङ्ग नभई सर्वस्वीकार्य अङ्ग मात्र

हो । अघिल्ला तीन अङ्गले कमजोरी गरे खबरदारी गर्ने भूमिका पत्रकारिताको हुन्छ । त्यसैले यसलाई वाचडग भनिएको हो । यसबाहेक पत्रकारिताले सूचना दिने, मनोरञ्जन दिने, शिक्षा दिने र प्रेरणा दिने काम गर्छ । सूचनालाई सकेसम्म धेरैभन्दा धेरै पाठक, श्रोता, दर्शकसित पुऱ्याउने काम पत्रकारिताको हो । समाजमा रहेका विकृति, विसङ्गतिको भण्डाफोर गर्ने र समाजलाई मार्गदर्शन गर्ने, सशक्तीकरण गर्ने र सुशासन ल्याउने काम पनि पत्रकारिताकै हो ।

अफसोच, जसरी राज्यका अन्य अङ्गहरूमा आदिवासी जनजाति समुदायको उपस्थिति कम छ, त्यस्तै अवस्था नेपाली पत्रकारितामा पनि छ । मूलधारका भनिने मिडियाहरूमा आदिवासी जनजातिको उपस्थिति प्रतीकात्मक मात्र रहेको छ । जसका कारण आदिवासी जनजातिका बारेमा खासै कभरेज भएको पाइँदैन । आदिवासी जनजातिले हजारौँको सङ्ख्यामा सडक प्रदर्शन गरे पनि, टुँडिखेलमा घाँटी सुक्ने गरी चिच्याए पनि मिडियामा उनीहरूको मागका बारेमा होइन, उनीहरूको परम्परागत पोसाक र सांस्कृतिक प्रस्तुतिका बारेमा मात्र स्थान मिल्छ । त्यसैले आफ्ना कुरा प्रस्ट रूपमा राख्न पनि पत्रकारितामा आदिवासी जनजाति समुदायको सहभागिता आवश्यक छ ।

माथि उल्लेख गरिसकियो, पत्रकारिता यस्तो पेसा हो, जसमा एउटा सानो सन्देश वा सूचना एकैपटक विश्वभर फैलाउन सक्ने शक्ति हुन्छ । तसर्थ, यदि हामीले हाम्रा माग, मुद्दाहरू एकैपटकमा ठूलो जनमानसलाई जानकारी गराउने हो भने पत्रकारिताको सहारा लिन अनिवार्य हुन्छ । सही मानिस, विषयवस्तुको राम्रो, गहन जानकारी प्रस्टसँग पस्कन सक्ने क्षमता नभएकाहरूबाट यो सम्भव छैन । पत्रकारहरू नै यस्ता कला भएका पेसाकर्मीहरू हुन् उनीहरूलाई समय र स्थान विशेषको सीमाभित्र रही स्पष्ट सन्देश दिन सक्ने क्षमता हुन्छ । त्यसैले आदिवासी जनजाति समुदायबाटै आएका पत्रकारहरूमा विषयवस्तुको चुरो दह्रोसँग बुझेको हुन्छ ।

आफ्नो समुदायलाई जागृत गराउन पत्रकारिताको महत्वपूर्ण भूमिका रहन्छ । उत्प्रेरकको काम पत्रकारिताले गर्छ । हिजोसम्म अज्ञान रहेकाहरूलाई सूचित पार्ने काम यसले गर्छ । विषयवस्तु थाहा पाएका तर प्रत्यक्ष-अप्रत्यक्ष रूपमा आन्दोलनमा संलग्न नभएका व्यक्तिहरूलाई सक्रिय बनाउने काम पत्रकारिताले गर्छ । आदिवासी जनजातिभित्र पनि बृहत् समुदाय छ । उनीहरूमध्ये कोही सम्पन्न छन्, कोही लोपोन्मुख । त्यस्ता कैयौँ सवालहरू एक-अर्कालाई जानकारी नै छैन । यदि जनजाति समुदायबाटै मिडियाकर्मी भएको अवस्थामा

त्यस्ता विषयहरू पहिचान गरी सबैलाई सूचित पार्न सक्छन् ।

जगजाहेरै छ, हामी आदिवासी जनजातिको पुर्ख्यौली पेसा पत्रकारिता होइन । उनीहरू पत्रकारितामा रमाउँदैनन् । पत्रकारितामा मात्र किन अरू लेखपढको पेसामा कमै रम्छन् । परिवार र समुदायबाट यस्ता कार्यमा लाग्न प्रोत्साहन मिल्दैन । अर्थोपार्जनका हिसाबले पत्रकारिता आकर्षक पेसा होइन । त्यसैले समुदायका खातिर पनि पत्रकारितामा लाग्न चाहनेहरूलाई सपोर्ट गर्नैपर्छ । यसको मतलब फेरि भोकै नाङ्गै पत्रकारिता गर्नुपर्छ भन्ने पनि नठानियोस् । हामीले हाम्रा समुदायबाट त्यस्ता पत्रकारहरू तयार गरौँ, जो नेपाली मूलधारको मिडियामा खपत हुन सकून् । यदि मूलधारमा प्रवेश गर्न सके भने उनीहरूको रोजिरोटी र परिवारको पालनपोषणमा त्यति धेरै समस्या पर्ने देखिन्न । तर, सबैले त्यहाँ पुग्ने मौका नपाउन सक्छन् । फेरि मूलधारका सन्चारमाध्यमले हाम्रा सवालहरू सधैँ बोक्छन् भन्ने पनि छैन । उनीहरूको स्वार्थ मिलुञ्जेल बोक्छन् त्यसपछि छोडिदिन्छन् । हामीले त्यतिबेला तथाकथित मूलधारलाई चुनौती दिन सक्ने जनशक्ति तयार पार्नुपर्छ । हाम्रै आफ्नै लगानीमा बैकल्पिक मिडियाहरू व्यावसायिक तवरले चलाउनुपर्छ ।

नेपामला धेरैजसो पत्रकार तालिम र स्वेच्छाले पत्रकार भएका छन् । हुनत पहिले पत्रकारिता अध्ययन गर्ने शिक्षण संस्था थिएनन् । तर, अहिले विभिन्न विश्वविद्यालय र कलेजहरू पनि खुलेका छन् । पहिले इन्टर्नसिप गर्ने सञ्चारमाध्यम पनि थिएनन् । अहिले जिल्ला जिल्लामा रेडियो, टिभी खुलेका छन् । त्यस हिसाबले अहिले अवसर चौतर्फी छ । प्रतिस्पर्धा पनि छ । अब यस्तो अवस्थामा समुदाय र सङ्घसंस्थाले गर्ने भनेको इच्छुक व्यक्तिहरूलाई छात्रवृत्ति, सहयोग दिने हो । वातावरण बनाइदिने हो । व्यक्तिगत र संस्थागतरूपबाट प्रायोजन गर्ने हो । समग्रमा हाम्रो उद्देश्य हरेक समुदायभित्रबाट पत्रकार तयार गर्ने हो ।

एक हिसाबले यस्तो कुरा गर्दा रङ्गभेदीजस्तो पनि देखिएला, तर यो बिल्कुल होइन । हामीले राजनीतिमा, सेनामा, निजामतीमा, प्राविधिक शिक्षामा सबैतिर आरक्षण र सबै जातिको प्रतिनिधित्व खोजिरहेका छौँ भने पत्रकारितामा किन नखोज्ने ? आखिर हरेक समुदायबाट आफ्ना कुराहरू बाहिर आउँदा सबैलाई फाइदै हुन्छ । सबैको सहभागिताबाट नै हो आजको दुनियाँमा लोकतन्त्र बलियो हुने । समाजमा पारदर्शिता र सुशासन पैदा हुने । घरघर समुन्नत भयो भने समाज समुन्नत हुन्छ र समाज उन्नतिशील हुँदा मुलुककै कायाकल्प हुन्छ । यस अर्थमा यो मुलुकको समुन्नतिका लागि पनि हो ।

# फोनिजको अधिवेशन २८ अगस्टमा हुँदै

## *जनजाति विषय उठान गर्ने पत्रकारद्वयलाई पुरस्कार घोषणा*

गत १४ अगस्ट २०१६ का दिन नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ (फोनिज) युकेको बैठकले पत्रकारद्वय गणेशमान गुरुङ र मिलन लिम्बूलाई पुरस्कृत गर्ने निर्णय गऱ्यो ।

लामो समयदेखि आदिवासी जनजाति आवाज नामक टेलिभिजन कार्यक्रम सगरमाथा टेलिभिजनबाट सञ्चालन गरी जनजाति सचेतनामा योगदान




गरेबापत पत्रकार गुरुङलाई र सवावेशी सवाल टेलिभिजन कार्यक्रम एबिसी च्यानलमा सञ्चालन गरी जनजातिको मुद्दा उठानमा सहयोग गरेबापत पत्रकार लिम्बूलाई यस वर्षको फोनिज युके पत्रकारिता पुरस्कार २०१७ प्रदान गर्ने निर्णय गरेको हो । प्रत्येक वर्ष प्रदान गरिने यस पुरस्कारको नगद राशि १५-१५ हजार रुपैयाँको रहेको छ । अघिल्लो वर्ष गोपाल छाङ्छा राई र रामविकास

चौधरीलाई प्रदान गरिएको थियो ।

फोनिज युकेको दोस्रो अधिवेशन 'पूर्ण समावेशी आमसञ्चार, संविधान खारेजी र पुनर्लेखन आधार' नारासहित यही अगस्टको २८ तारिख अल्डरसुटको एम्पाएर ब्याङक्वेटमा हुँदैछ। उक्त अधिवेशनका लागि नेपालबाट फोनिज केन्द्रीय अध्यक्ष डण्ड गुरुङ, फोनिज केन्द्रीय सल्लाहकार तथा कान्तिपुरकर्मी गणेश राई, उपराष्ट्रपतिका प्रेस संयोजक फोनिज सङ्गठन सचिव मनोज घर्तीमगर, लिम्बू पत्रकार सङ्घका अध्यक्ष देवेन्द्र खापुङ सुर्केली र फोनिज कास्कीका निवर्तमान अध्यक्ष तथा कास्की आवाजकर्मी हुम गुरुङ युके आउने पक्का भएको छ ।

अधिवेशनका अवसरमा पत्रकारितामा योगदान दिएबापत रिटायर्ड मेजर सोनाम शेर्पालाई अभिनन्दन गरिने साथै पत्रकारिता तालिम पनि गराइने जनाइएको छ । अधिवेशनबाट नयाँ नेतृत्व निर्माणका लागि पूर्वअध्यक्ष पूर्ण गुरुङलाई निर्वाचन संयोजक तोकेको छ ।

बैठकले नेपाल आदिवासी जनजाति महासङ्घ युकेका अध्यक्ष तुल छन्त्याल र नेपाल आदिवासी जनजाति महिला महासङ्घ युकेका अध्यक्ष विमला राईलाई पदेन सल्लाहकारमा चयन गर्ने निर्णय गऱ्यो । साथै, फोनिज युकेका गतिविधिलाई समेटेर द जर्नालिस्ट प्रकाशन गर्ने पनि निर्णय गऱ्यो ।

# युकेमा २३औं विश्व आदिवासी दिवस भव्यतापूर्वक सम्पन्न

गत ६ जुलाई २०१७ का दिन युकेको अल्डसुट स्थित २३औं विश्व आदिवासी दिवस भव्यतापूर्वक सम्पन्न भयो । नेपाल आदिवासी जनजाति




महासङ्घ युके, नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ युके (फोनिज), र नेपाल आदिवासी जनजाति महिला महासङ्घ युकेको संयुक्त आयोजनामा उक्त दिवस सम्पन्न भएको हो ।

प्रमुख अतिथि युकेका लागि नेपालका राजदूत डा. दुर्गाबहादुर सुवेदीले नेपाल सरकारको तर्फबाट शुभकामना दिँदै आदिवासी जनजातिहरू अन्याय

र उपेक्षामा परेको कुरा साँचो हो भन्नुभयो । नेपाली राष्ट्रिय गानाले भनेझैं समावेशी चरित्रको नेपाली समाजमा धेरै सुधार गर्नुपर्ने र क्रमशः सुधार पनि हुँदै आएको विचार व्यक्त गर्नुभयो । पूर्वकृषिमन्त्री, वाणिज्यमन्त्री विजयप्रकाश थेबेले हालको संविधानले निकाश दिन नसक्ने र संविधानमै विभेद भएको साथै आदिवासी जनजातिले दयाको भिख होइन र संविधानमा अक्षरस अधिकारको माग गरेको बताउनुभयो । त्यस्तैगरी अर्का वक्ता गेसोका केन्द्रीय अध्यक्ष कृष्णकुमार राईले भूतपूर्व गोर्खाहरूको एकताका निम्ति जनजाति महासङ्घ युकेले खेलेको योगदानको खुलेरै प्रशंसा गर्नुभयो । अर्का वक्ता गोर्खा सत्याग्रहका निर्देशक ज्ञानराज राईले आदिवासी जनजातिहरूको अहिलेको अवस्था आउनुमा अङ्ग्रेजहरूको मुख्य हात रहेको, यदि गोर्खा भर्ती नभएको भए जनजातिहरू शासक भएर बस्ने तर्क राख्नुभयो । विभिन्न १३ वटा जातीय उत्थान सङ्गठनका अध्यक्ष तथा प्रतिनिधिहरूले मन्तव्य राखेका थिए भने जनजाति पत्रकार महासङ्घको तर्फबाट विश्व आदिवासी दिवसका बारेमा युके अध्यक्ष विश्वास दीप तिगेलाले विस्तृत जानकारी गराएका थिए ।

डा. चन्द्र लक्सम्बा, प्रोफेसर सुमाया राई, मुछेत्र गुरुङ, ग्याम गुरुङ, नेम थापा, काजीमान याक्सो, कल्पना राई, भक्त दुरा, गणेश इजम, सिरी लिम्बू, कृष्णा सुब्बा, मनकुमारी सुनुवार, राजेन राई, जङ्ग सुनुवार, खुसी लिम्बू, थर्क राना र लक्ष्मण तुलाचनलगायतले विश्व आदिवासी दिवसका बारेमा बोलेका थिए । कार्यक्रममा विभिन्न व्यक्तित्वहरूलाई सम्मान पनि गरेका थिए । दोस्रो चरणमा सांस्कृतिक कार्यक्रम रहेको थियो ।

सन् १९९४ बाट सुरु भएको आदिवासी दिवस यस वर्ष २३औं संस्करण हो भने प्रत्येक अगस्टको ९ तारिख विश्वभर विश्व आदिवासी दिवस मनाउने गरिन्छ । नेपाल आदिवासी जनजाति महासङ्घ नेपालको प्रवासमा १९ मुलुकका शाखाहरू र नेपालभित्र ७१ वटा जिल्ला र ३ हजार गाँउ एकाइहरू सक्रिय छन् । यस वर्ष पहिचानसहितको सङ्घीयताका लागि संविधान संशोधनको नाराका साथ दिवस सम्पन्न भएको हो । महासङ्घ अध्यक्ष तुल छन्त्यालको अध्यक्षतामा सम्पन्न समारोहलाई महासचिव कर्म पहाडी शेर्पाले र दोस्रो चरणको सांस्कृतिक कार्यक्रमलाई महिला महासङ्घकी महासचिव वसुन्धरा याख्खाले सञ्चालन गर्नुभएको थियो ।

# फोनिज युकेको एकदिने गोष्ठी एवं प्रशिक्षण सम्पन्न

गत २२ अप्रिल २०१७ का दिन नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ, (फोनिज) युकेको एकदिने गोष्ठी एवं प्रशिक्षण कार्यक्रम सम्पन्न भयो ।

पत्रकार नरेश खपाङ्गीले आधारभूत पत्रकारिता र युकेमा नेपाली पत्रकारिता विषयक प्रशिक्षण दिनुभयो भने सिनियर पत्रकार सोनाम छिरिङ




शेर्पाले रेडियो पत्रकारितामा हासिल गरेको अनुभव बाँड्नुभयो । त्यस्तैगरी आमन्त्रित केन्ट्रिस एक्सप्रेसका पत्रकार ऐडन बरलोले युकेको पत्रकारिता बारेमा विस्तृत जानकारी र पत्रकारिताका नियम-कानुन एवं गोर्खालीहरूका बारेमा चासो गरिएको विषयहरूको बारेमा जानकारी गराउनुभयो ।

नेपाल आदिवासी जनजाति महासङ्घ युकेका अध्यक्ष तुल छन्त्याल र

सिनियर पत्रकार शेर्पाले सयुक्त रूपमा दीप प्रज्वलन गरी कार्यक्रमको सुरुवात गर्नुभयो । समाजका अग्रज नेतृत्व र पत्रकारहरू मात्र सहभागी गोष्ठीमा पत्रकारिताका चुनौती र सम्भावना विषयमा व्यापक छलफल भएको थियो । मिडियाहरूप्रति पाठक, श्रोता र दर्शकहरूको गुनासो तथा जिज्ञासा र उहाँरूप्रति सञ्चारकर्मीहरूको गुनासो सुन्ने र सुनाउने कार्य भयो ।

जनजाति महासङ्घका वरिष्ठ उपाध्यक्ष जङ्ग सुनुवार, महासचिव कर्म पहाडी शेर्पा, जनजाति महासङ्घका पूर्वअध्यक्ष शिरीप्रसाद लिम्बू, आसफोर्ड नेपलिज कम्युनिटीका महासचिव डम्बर सिंगक, एनआरएन युकेका प्रवक्ता खुसी लिम्बूलगायतले गुनासा, जिज्ञासा र सुझाव राख्नुभएको थियो ।

फोनिजमा आबद्ध ११ जातीय उत्थान पत्रकारहरू सङ्गठनहरूलाई युकेमा समेत स्थापना गर्ने सिलसिलामा लिम्बू पत्रकार सङ्घ युकेको संयोजकमा पत्रकार अमित थेबेलाई चयन गऱ्यो । त्यस्तैगरी अन्तर्राष्ट्रिय पत्रकार महासङ्घ, ब्रसेल्सको सदस्यतापत्र पत्रकार सुरेन्द्र इङनामलाई प्रशिक्षक खपाङ्गीले हस्तान्तरण गर्नुभयो ।

फोनिज युकेका अध्यक्ष विश्वासदीप तिगेलाले अध्यक्षता गर्नुभएको कार्यक्रमलाई महासचिव प्रमिला लाबुङ राईले सञ्चालन गर्नुभएको थियो । फोनिज युकेको दोस्रो महाधिवेशन जुलाईको अन्तिम हप्ता हुने जनाइएको छ । प्रशिक्षक खपाङ्गी नेपाल पत्रकार महासङ्घ युकेका अध्यक्षसमेत हुन् ।

# उपराष्ट्रपतिद्वारा पत्रकारद्वयलाई सम्मान तथा पुरस्कार

**काठमाडौं।** उपराष्ट्रपति नन्दबहादुर पुनले पत्रकारद्वय गोपाल छाङ्छा राई र रामविकास चौधरीलाई २०७४ वैशाख ३ गते सम्मान तथा पुरस्कार प्रदान



गर्नुभएको छ । नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ (फोनिज युके) द्वारा स्थापित पुरस्कार पत्रकारद्वयलाई प्रदान गर्नुभएको हो ।

वि.स. २०३५ बाटै 'धर्म निरपेक्षता, जातीय सद्भाव र समानुपातिक प्रतिनिधित्वका लागि' भन्ने नारा राखेर 'छहरा' नामक साप्ताहिक पत्रिका निरन्तर ३९ वर्ष प्रकाशन तथा सम्पादन गरी समाजको चेतनामा पुऱ्याएको योगदानबापत पत्रकार गोपाल छाङ्छालाई यस वर्षको सम्मान र जारी मधेस



आन्दोलनमा ६२ जनाले सहादत प्राप्त गरेको आन्दोलनमाथि राज्यको क्रूर दमन र जनताको आवाजलाई निष्पक्ष सम्प्रेषण गरेबापत भैरहवा साप्ताहिकका सम्पादक तथा स्वतन्त्र पत्रकार रामविकास चौधरीलाई पनि नगदसहित यस वर्षको पुरस्कार प्रदान गरेको हो ।

कार्यक्रममा फोनिज युकेका अध्यक्ष विश्वासदीप तिगेला, फोनिजका केन्द्रीय अध्यक्ष डण्ड गुरुङ, महासचिव गजुरधन राई, सचिव मनोज घर्तीमगर, सल्लाहकार गणेश राई, गोर्खा सञ्चार सहकारी संस्थाका अध्यक्ष प्रेम बेघालगायतको उपस्थिति रहेको थियो ।

गत २७ फेब्रुवरी २०१६ का दिन युकेको अल्डरसटमा बसेको नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ (फोनिज)को बैठकले फोनिज युके पत्रकारिता सम्मान तथा पुरस्कार २०१६ घोषणा गरेको थियो ।

प्रत्येक वर्ष प्रदान गरिने फोनिज युके पत्रकारिता पुरस्कार तथा सम्मानका लागि बरिष्ठ पत्रकार तथा रेडियो बिजिडब्लुएसका निर्देशक मेजर रिटायर्ड सोनाम छिरिङ शेर्पाले ५ वर्षका लागि प्रायोजन गरेका हुन् । सम्मान र पुरस्कार नगद १५-१५ हजार रहेको थियो ।

# युकेबाट पत्रकार छाङ्छालाई सम्मान र मधेस आन्दोलनका सच्चा पत्रकार चौधरी पुरस्कृत



*पत्रकार गोपाल छाङ्छा*



*पत्रकार रामविकास चौधरी*

गत २७ फेब्रुवरी २०१६ का दिन युकेको अल्डसटमा बसेको नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ (फोनिज)को बैठकले फोनिज युके पत्रकारिता सम्मान तथा पुरस्कार २०१६ घोषणा गऱ्यो ।

वि.स. २०३५ बाटै 'धर्म निरपेक्षता, जातीय सद्भाव र समानुपातिक प्रतिनिधित्वका लागि' भन्ने नारा राखेर 'छहरा' नामक साप्ताहिक पत्रिका निरन्तर ३९ वर्ष प्रकाशन तथा सम्पादन गरी समाजको चेतनामा पुऱ्याएको योगदानबापत पत्रकार गोपाल छाङ्छालाई यस वर्षको सम्मान र जारी मधेस आन्दोलनमा ६२ जनाले सहादत प्राप्त गरेको आन्दोलनमाथि राज्यको क्रूर दमन र जनताको आवाजलाई निष्पक्ष सम्प्रेषण गरेबापत भैरहवा साप्ताहिकका

सम्पादक तथा स्वतन्त्र पत्रकार रामविकास चौधरीलाई पनि नगदसहित यस वर्षको पुरस्कार प्रदान गर्ने निर्णय गरेको छ ।

नेपालबाट युके आइपुग्नुभएका नेपाल पत्रकार महासङ्घ नेपालका केन्द्रीय महासचिव उजिर मगरलाई फोनिज युकेका अध्यक्ष विश्वासदीप तिगेलाले खदा र सम्मानपत्रद्वारा स्वागत गर्नुभयो । त्यस्तैगरी युकेमै पत्रकारिता विषयमा स्नाकोत्तर गरेकी सुश्री शिला लिम्बूले युकेको पत्रकारिता सम्बन्धमा जानकारी गराउनुभएबापत उहाँलाई पनि धन्यवादपत्र प्रदान गरिएको थियो ।

प्रत्येक वर्ष प्रदान गरिने फोनिज युके पत्रकारिता पुरस्कार तथा सम्मानका लागि वरिष्ठ पत्रकार तथा रेडियो बिजिडब्लुएसका निर्देशक मेजर रिटायर्ड सोनाम छिरिङ शेर्पाले ५ वर्षका लागि प्रायोजन गर्ने सहमतिपत्रमा पनि हस्ताक्षर भयो । सम्मान र पुरस्कार नगद १५-१५ हजार रुपैयाँको रहनेछ । महासचिव प्रमिला लाबुङ राईले बैठक सञ्चालन गर्नुभएको थियो ।

# फोनिज युकेको अध्यक्षमा तिगेला सर्वसम्मत



गत १६ जनवरी २०१६ का दिन नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ (फोनिज) युके समितिको सम्पन्न बैठकले विश्वासदीप तिगेलालाई अध्यक्षमा सर्वसम्मत चयन गरेको छ । अल्डरसुटको भेटघाट रेस्टुरेन्टमा सम्पन्न महासङ्घको बैठकले उक्त निर्णय गरेको हो । फोनिज युकेका अध्यक्ष किरण टी लिम्बू नेपाल फर्कनुभएका कारण उपाध्यक्ष तिगेलाले कार्यवाहक अध्यक्षको जिम्मेवारी सम्हाल्दै आएका थिए । तिगेला विगत २ दशकदेखि निरन्तर साहित्य लेखन र पत्रकारिता क्षेत्रमा सक्रिय हुँदै आएका छन् । बैठकले पूर्वअध्यक्ष लिम्बूलाई धन्यवाद प्रस्ताव पनि पारित गऱ्यो ।

अघिल्ला बैठकका निर्णयहरूको समीक्षा गर्दै सुरु भएको बैठकले अब तत्कालै पूर्वघोषित पत्रकारिता पुरस्कार प्रदान गर्ने निर्णय गरेको छ । यसपटकको पत्रकारिता पुरस्कार मधेस र थरुहटमा जारी आन्दोलनको बारे सही समाचार सम्प्रेषण गर्ने पत्रकारलाई दिने निर्णय गरेको छ । पुरस्कार रासी २ सय पाउन्ड अर्थात् लगभग नेरु ३० हजार हुनेछ । प्रत्येक वर्ष प्रदान गरिने उक्त पुरस्कारको प्रायोजन मेजर रिटायर्ड तथा सञ्चारकर्मी सोनाम छिरिङ शेर्पाले गर्नुभएको हो । त्यस्तैगरी नगदसहित अर्का पत्रकारलाई सम्मान पनि गर्ने निर्णय गऱ्यो ।

फोनिज नेपालमा राई पत्रकार सङ्घ, तमु सञ्चारकर्मी सङ्घ, लिम्बू पत्रकार सङ्घ, तामाङ सञ्चार समूह, नेवा पत्रकार राष्ट्रिय दवूः, थारू पत्रकार सङ्घ, शेर्पा सञ्चार समूह नेपाल, मगर आमसञ्चारकर्मी सङ्घ, नेपाल र थामी पत्रकार सङ्घ आबद्ध रहेका छन् भने युकेमा सन् २०१३ मा स्थापना भएको हो ।

# जनजाति पत्रकार महासङ्घ युकेको वार्षिक भेला

## *पुरस्कार तथा सम्मानको स्थापना साथै वेभपेज उद्घाटन*

नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ, युके समितिको वार्षिक भेला अल्डरसुटको एक रेस्टुरेन्टमा सम्पन्न भएको छ ।

महासचिव प्रमिला लाबुङको वार्षिक प्रतिवेदन र कोषाध्यक्ष विधाता राईको




आर्थिक प्रतिवेदन पारितसँगै वर्षभरि गरिने कार्यक्रमहरू भेलाले तय गरेको छ । जनजाति पत्रकार महासङ्घ नेपालमा आबद्ध विभिन्न जातिय उत्थान सस्थाका पत्रकार सङ्गठनहरू युकेमा पनि स्थापना गर्न सम्बन्धित संस्थाहरूलाई सहयोग गर्ने र समुदायभित्रै धेरै पत्रकारहरू उत्पादन गर्ने निर्णय गऱ्यो ।

प्रत्येक वर्ष युकेमा कार्यरत पत्रकारहरूमध्येबाट एकजनालाई सम्मान र एकजनालाई पुरस्कृत पनि गर्ने निर्णय गऱ्यो । त्यस्तैगरी नेपालमा पनि जनजाति पत्रकार महासङ्घ युकेको तर्फबाट प्रत्येक वर्ष उत्कृष्ट पत्रकार छनोट गरी एकजनालाई सम्मान र एकजनालाई नगदसहितको पुरस्कार प्रदान गर्ने निर्णय गऱ्यो । नगद पुरस्कारका लागि अग्रज सञ्चारकर्मी रिटायर्ड गोर्खा मेजर सोनाम छिरिङ शेर्पाले व्यक्तिगत रूपमा प्रत्येक वर्ष १५ हजार रुपैयाँ प्रदान गर्ने घोषणा गर्नुभयो । शेर्पा बिजिडब्लुएस कम्युनिटी रेडियो फान्ब्रोका निर्देशक तथा प्रस्तोता हुनुहुन्छ । दार्जिलिङमा जन्मनुभई लामो समय ब्रिटिस गोर्खा सेनामा सेवा गर्नुभई अवकाश प्राप्त हुनुहुन्छ । नेपालमा प्रदान गरिने सम्मान तथा पुरस्कार जनजाति पत्रकार महासङ्घ नेपाल समितिसँग समन्वय गरी छनोट र हस्तान्तरण गरिनेछ ।

भेलाले पत्रकार नरेश खपाङ्गीमगर र सुमलकुमार गुरुङलाई सल्लाहकारमा सर्वसम्मत नियुक्ति गरियो । त्यस्तैगरी महासङ्घको स्मारिका प्रकाशन गर्ने, युकेमा पत्रकारिता अध्ययनरतहरूको तथ्याङ राख्ने साथै प्रत्येक वर्ष विश्व आदिवासी दिवसका दिन अन्तरक्रिया, तालिम आदि गर्दै मनाउने पनि निर्णय गऱ्यो । महासङ्घमा राई पत्रकार सङ्घ, लिम्बू पत्रकार सङ्घ, तामाङ सञ्चार समूह, नेवाः पत्रकार राष्ट्रिय दबुः, थारू पत्रकार सङ्घ, शेर्पा सञ्चार समूह नेपाल, गुरुङ सञ्चारकर्मी सङ्घ नेपाल, मगर आमसञ्चारकर्मी सङ्घ नेपाल, सुनुवार पत्रकार सङ्घ र थामी पत्रकार सङ्घ आबद्ध रहेका छन् ।

भेलामा जनजाति पत्रकार महासङ्घ युके समितिको नवनिर्मित वेभपेज फोनिजडटअर्ग www.fonijuk.org को अग्रज सञ्चारकर्मी सोनाम छिरिङ शेर्पाले उद्घाटन गर्नुभयो । महासङ्घ युकेले गत वर्ष इतिहासमै पहिलोपटक पत्रकार अन्तरक्रिया र पत्रकारिता तालिम सम्पन्न गरिसकेको छ । भेलाको सभापतित्व अध्यक्ष किरण टी लिम्बूले गर्नुभएको थियो ।

**३० जुन २०१५**

# अङ्ग्रेजहरूसँग पनि घुलमिलमा सहयोग पुगोस् भनेर रेडियो स्थापना गरेका हौं

## रिटायर्ड मेजर सोनाम शेर्पा

*रेडियो बिजिडब्लुएस ११७९ एफएमले अहिले २४सै घण्टा कार्यक्रम प्रसारण गरिरहेको छ। ब्रिटिस गोर्खा सेनामा कार्यरत रहँदा सन् १९८३ देखि सन १९८६ सम्म बिएफबिएस गोर्खा उनले सन् २००६ सालदेखि लगातार रेडियो स्थापनामा महत्वपूर्ण समय दिँदै आएका छन्। रेडियो बिजिडब्लुएसको म्यानेजिङ डाइरेक्टर मेजर शेर्पाले रेडियो बिजिडब्लुएसको व्यवस्थापन, कार्यक्रम उत्पादन र सञ्चालन गर्दै आएका छन्।*



**० रेडियो बिजिडब्लुएस के उद्देश्यले स्थापना भएको हो ?**

- रेडियो बिजिडब्लुएस ब्रिटिस गोर्खा वेलफेयर सोसाइटी युकेद्वारा सञ्चालित सामुदायिक रेडियो हो। यसले ३० सेप्टेम्बर २०११ देखि लगातार रूपमा प्रसारण गर्दै आएको छ। सन् २००३ मा ब्रिटिस गोर्खा वेलफेयर सोसाइटीको युके स्थापना भयो। संस्थाले पूर्वगोर्खाहरू बेलायतमा बस्न पाउनुपर्छ भनेर मेजर रिटायर्ड टिकेन्द्रदल देवानको अगुवाइमा लिभरपुलमा प्रदर्शन गर्‍यो। परिणामस्वरूप, पूर्वगोर्खाहरूले बेलायतमा बस्ने अधिकार प्राप्त गर्‍यो। पूर्वगोर्खाजको आवाज र दुःख-सुखका कुराहरू बिएफबिएफ गोर्खा रेडियोले

प्रसारण गर्न मानेन भन्ने सुनिन थाल्यो । हाम्रा आवाज सम्बन्धित निकायमा पुऱ्याउन र भर्खरै सेटल भएका गोर्खाजहरूलाई स्थानीय ब्रिटिस नागरिकसँग घुलमिल गराउनका लागि पनि रेडियोले राम्रो भूमिका खेल्न सक्ने देखेपछि मेरो बिएफबिएस गोर्खा रेडियोको अनुभव, बिबिसी रेडियोबाट लिएको विभिन्न तालिम आदिका आधारमा मिडिया डाइरेक्टरको हैसियतले रेडियो सञ्चालनका लागि संस्थाले मलाई जिम्मेवारी दियो । सन् २००६ सालमा आफ्नै गोर्खा परिवारभित्रका दिदीबहिनी र भान्जाभान्जीलाई कार्यक्रम उत्पादन, प्रसारण र प्राविधिक ज्ञानसम्बन्धी तालिम दिए । त्यसपछि सन् २००७ सालको जनवरी महिनामा बिजिडब्लुएसकै खर्चबाट हामीले २८ दिनसम्म परीक्षणका रूपमा सफलतापूर्वक एफएम प्रसारण गऱ्यौं । देश र विदेशबाट थुप्रै सकारात्मक प्रतिक्रिया आए । संस्थाले मलाई लाइसेन्स लिन जिम्मेवारी प्रदान गऱ्यो । मैले सामुदायिक रेडियो सञ्चालन अनुमतिका लागि सम्बन्धित निकायमा निवेदन दिएँ । सन् २००९ मा हामीले २ वर्षभित्र रेडियो सञ्चालन गर्नुपर्ने सर्तसहित अनुमति प्राप्त गऱ्यौं ।

***रेडियो बिजिडब्लुएस सामुदायिक नेपाली रेडियो हो । यो पूर्वगोर्खाजहरूको मात्र होइन, सिङ्गो नेपालीहरूको रेडियो हो । श्रोताहरूले यसलाई माया गरिदिनुहोस्, सुनिदिनुहोस् । व्यापारीहरूले विज्ञापन दिएर आफैं पनि फाइदा लिनुहोस्, हामीलाई पनि सहयोग गरिदिनुहोस् भन्न चाहन्छु ।***

सन् २००९ मा संस्थाको आर्थिक अवस्था त्यति राम्रो थिएन । अनुमतिपत्रअनुसार हामीले ३० सेप्टेम्बर २०११ भित्र अनएयरमा जानुपर्ने थियो । थुप्रै प्रयासका बाबजुद ३० सेप्टेम्बर २०११ दिन हामीले प्रसारण सुरु गऱ्यौं । सुरुमा हामीले जम्मा ६ घण्टा मात्रै कार्यक्रम सञ्चालन गरेका थियौं, तर गत दुई वर्षदेखि हामीले २४सै घण्टा प्रसारण गर्दै आएका छौं ।

**○ RADIO BGWS के कुन किसिमका कार्यक्रमहरू प्रसारण गर्दै आएको छ ?**

- हामीले स्थानीय अङ्ग्रेजहरूसँग पनि घुलमिलमा सहयोग पुगोस् भन्ने उद्देश्यले पनि रेडियो स्थापना गरेका हौं । त्यसैले हामीले स्थानीय

काउन्सिल, प्रहरी, एनएचएस, फायर ब्रिगेड साथै विभिन्न स्थानीय निकायहरूले के-कस्ता सेवाहरू दिइरहेको छ भन्नेबारेमा विभिन्न जानकारी र सूचनामूलक कार्यक्रमहरूको प्रसारण गर्दै आएका छौँ । त्यसैगरी स्थानीय निकाय, स्थानीय एमपी, नेपाली सङ्घ, संस्था, नेपाली कलाकार, नेपालबाट आएका सभासद्, मन्त्री, विज्ञलगायतका विशिष्ट व्यक्तिहरूसँगको अन्तर्वार्तालाई जोड दिँदै आएका छौँ भने देश र विदेशका समाचारहरूलाई पनि हामीले विशेष स्थान दिँदै आएका छौँ । हाम्रो रेडियोमार्फत समाचार, अन्तर्वार्ता, गीत, सङ्गीत, नाटक र कवितामार्फत विभिन्न सन्देशहरू दिँदै आएका छौँ । अहिले विशेष गरेर अन्तर्वार्ता, नारी संसार, व्यक्ति-व्यक्तित्व, श्रुतिशृङ्खला, स्वास्थ्य चर्चा, घरेलु हिंसा, लोकलहरी, गीति कथा र युवाहरूलाई लक्षित गरेर थुप्रै कार्यक्रम प्रसारण गर्दै आएका छौँ ।

○ **RADIO BGWS को प्रसारण COVERAGE AREA कतिछ** ?

- फानबरो, क्याम्बर्ली, फ्रेंम्ली, अल्डरसट र प्लिटका श्रोताहरूले सहजै सुन्न सक्नुहुन्छ भने रेडिङको छेउछाउ र फेल्थामका केही भागका श्रोताहरूले पनि सुन्न सक्नुहुन्छ । त्यसैगरी संसारभरिका श्रोताहरूले हाम्रो website: www.radiobgws.co.uk/Mobile Phone मा Android Apps download गरेर विश्वभर सुन्न सक्नुहुन्छ । क्षमताको कुरा गर्दा अहिलेको भन्दा चार गुणा बढी क्षमता हामीसँग छ, अर्थात् हामीसँग क्षमता छ त र एन्टिनाको क्षमता कम भएका कारण त्यो क्षमताअनुसार प्रसारण गर्न सकिरहेका छैनौँ । यदि एन्टिनाको क्षमता बढाउन सके लन्डन, बेजिङ्गस्टोक, रेडिङलगायतका श्रोताहरूले पनि हाम्रो रेडियो सहजै सुन्न सक्नेछन् । त्यसैगरी आवश्यक बजेटको व्यवस्था भए, हामीले विभिन्न कार्यक्रमलाई प्रत्यक्ष प्रसारण गर्दै सेवालाई अझ गुणस्तरीय बनाउन सक्थ्यौँ ।

○ **स्थानीय काउन्सिलबाट के–कस्तो सहयोग प्राप्त गर्नुभएको छ** ?

- Rushmoor Borough को भूतपूर्व Mayor n] Charity Dinner को आयोजना गरेर Radio BGWS लाई £4300 प्रदान गरेको थियो । त्यसका लागि हामी उहाँप्रति आभारी छौँ ।

○ **रेडियो सञ्चालनका लागि वार्षिक कति बजेट आवश्यक पर्छ** ?

- अहिलेको कार्यक्रम उत्पादन र प्रसारणलाई हेर्ने हो भने वार्षिक करिब ७० हजार पाउन्ड खर्च हुन्छ । तर, हामी सबैले भोलन्टरी सेवा गरिरहेका छौँ । वार्षिक १५ हजार पाउन्डभन्दा बढीको बजेट खर्च गरेका छैनौँ । जुन बजेटबाट

हामीले एकजनालाई पार्ट टाइम, रोयल्टी पे, कपिराइट पेलगायतको खर्चलाई व्यवस्थापन गरिरहेका छौँ । यी खर्चहरूको विवरण वार्षिक रूपमा अफिस अफ कम्युनिकेसनलाई बुझाउनुपर्छ ।

**० अहिले रेडियोमा कतिजना कार्यरत छन् ?**

- अहिले मैले रेडियोमा ३ सय ६५ दिन नै भोलन्टरी गर्दै छु, अर्थात् सातै दिन म रेडियोकै काममा व्यस्त हुन्छु । प्रमिला राईज्यूले बोर्ड कास्टर र एड्मिनको जिम्मेवारी लिनुभएको छ। त्यसैगरी गोमाराना, जमुना पुन, पुष्पा गुरुङ र सीता थापाले विभिन्न कार्यक्रमहरू उत्पादन र प्रसारण गर्नुहुन्छ। उहाँहरूले पनि सुरुदेखि नै भोलन्टरी गर्दै आउनुभएको छ। यसभन्दा अघि विभिन्न समयमा सुशीला गुरुङ, मीना थापा, नवीना गुरुङ, प्रेरणा गुरुङ, मोनिका गुरुङ, शिला लिम्बू, मरीषा गुरुङ, नीलिमा राई, मीना गुरुङ, मुना थापा, दमिन्ती लिम्बू, नीलम राई, पुष्पा सुनुवारले भोलन्टरी सेवा गर्नुभएको थियो ।

***अहिले विशेष गरेर अन्तर्वार्ता, नारी संसार, व्यक्ति–व्यक्तित्व, श्रुतिशृङ्खला, स्वास्थ्य चर्चा, घरेलु हिंसा, लोकलहरी, गीति कथा र युवाहरूलाई लक्षित गरेर थुप्रै कार्यक्रम प्रसारण गर्दै***

**० अन्त्यमा केही भन्न चाहनुहुन्छ कि ?**

- रेडियो बिजिडब्लुएस सामुदायिक नेपाली रेडियो हो । यो पूर्वगोर्खाजहरूको मात्र होइन, सिङ्गो नेपालीहरूको रेडियो हो । श्रोताहरूले यसलाई माया गरिदिनुहोस्, सुनिदिनुहोस् । व्यापारीहरूले विज्ञापन दिएर आफैँ पनि फाइदा लिनुहोस्, हामीलाई पनि सहयोग गरिदिनुहोस् भन्न चाहन्छु । त्यसैगरी हालसम्म रेडियो स्थापना र सञ्चालनमा महत्वपूर्ण सल्लाह र सुझाव दिनुहुने हाम्रा बिजिडब्लुएसका अध्यक्ष टिकेन्द्रदल देवान (जे.पी.)ज्यूलगायत सम्पूर्ण बिजिडब्लुए सपरिवार, श्रोता, शुभचिन्तक, विज्ञापनदाता, विज्ञ, अन्तर्वार्ताकार, रेडियो सञ्चालनमा महत्वपूर्ण समय दिइसक्नुभएका र हाल आफ्नो अमूल्य समय दिइरहनुभएका प्रस्तोताहरूमा मेरो व्यक्तिगत तर्फबाट र रेडियो बिजिडब्लुएसको तर्फबाट हार्दिक धन्यवाद दिन चाहन्छु ।

*– प्रमिला लाबुङ राई*

# नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घमा आबद्ध पत्रकार सङ्गठनहरू

१. राई पत्रकार सङ्घ
२. लिम्बू पत्रकार सङ्घ
३. तामाङ सञ्चार समूह
४. नेवा पत्रकार राष्ट्रिय दबू
५. थारू पत्रकार सङ्घ
६. नेपाल आदिवासी जनजाति पत्रकार सङ्घ
७. शेर्पा सञ्चार समूह नेपाल
८. तमू (गुरुङ) सञ्चारकर्मी सङ्घ, नेपाल
९. सुनुवार पत्रकार सङ्घ
१०. मगर आमसञ्चारकर्मी सङ्घ, नेपाल
११. थामी पत्रकार सङ्घ

## नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ, युके

## *(१६ जनवरी २०१६ देखि २८ अगस्ट २०१७)*

| **अध्यक्ष** | **सचिव** |
|---|---|
| विश्वासदीप तिगेला | प्रमिला राई |
| **सहसचिव** | **कोषाध्यक्ष** |
| नगेन्द्रराज नेम्वाङ | विधाता राई |

**सदस्यहरू**

- देवेन्द्र खेरस
- भावना 'परिष्कृत' सुनुवार
- जानुका राई
- खुशी लिम्बू
- मिलन तमु
- सविन्द्रकुमार गुरुङ
- पुष्पा गुरुङ

**पदेन सल्लाहकार :**

- तुल छन्त्याल, अध्यक्ष : नेपाल आदिवासी जनजाति महासङ्घ, युके
- विमला राई, अध्यक्ष : नेपाल आदिवासी जनजाति महिला महासङ्घ, युके

**सल्लाहकार**

- रिटायर्ड मेजर सोनाम छिरिङ शेर्पा, बिजिडब्लुएस रेडियो निर्देशक
- हरिकुमार गुरुङ, एभरेष्ट टाइम्सका प्रधान सम्पादक
- विजय थापा, नेपाली टिभीका सस्थापक
- डा. चन्द्र लक्सम्बा, नेपाली पत्रका संस्थापक
- चण्डिराज राई, नयाँ सन्देश पत्रिकाका प्रधान सम्पादक
- विमला सेने लिम्बू, युरोप दम्पती कार्यक्रमका प्रस्तोता तथा पूर्वबिएफविएस रेडियो सञ्चालिका
- नरेश खपाङ्गीमगर
- सुमलकुमार गुरुङ
- दुत पुन (चिमखोले काइँला)
- एकेन्द्र गुरुङ
- ग्याम गुरुङ
- डम्बर सिंगक

**पूर्वअध्यक्ष तथा सल्लाहकार**

१. पूर्ण गुरुङ (सन् २०१३(१४)
२. किरण टी लिम्बू (सन् २०१४(१५)

# व्यावसायिक पत्रकारिता कला अभिव्यक्ति सम्पन्न




गत २१ अगस्ट २०१४ का दिन फान्ब्रो, युकेमा व्यावसायिक पत्रकारिता कला अभिव्यक्ति कार्यक्रम नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ (फोनिज) युके र एभरेस्ट टाइम्स साप्ताहिकको संयुक्त आयोजनामा सम्पन्न भयो ।

मिडियाले सधैँ समाजमा कसले कति प्रभाव पार्छ भन्ने कुरालाई केन्द्रबिन्दु बनाएर समाचार लेखिने गर्छ। त्यसैले मिडियाहरू पक्षपाती भयो भन्नु मात्र सही होइन । समाजमा राम्रो या नराम्रो प्रभाव पार्न सक्ने कुरा समाचार बन्ने कुरा फोनिजका पूर्वअध्यक्ष खिम घलेले बताउनुभयो ।

त्यस्तैगरी फोनिज केन्द्रीय अध्यक्ष दण्ड गुरुङले नेपाली पत्रकारिताका चुनौती र सम्भावनाका बारेमा बोल्नुभयो ।  कार्यक्रममा पत्रकारिताका विद्यार्थी र समाजका अगुवाहरूको ठूलो उपस्थिति थियो ।

# २९ जुन २०१५ का दिन सम्पन्न प्रथम अधिवेशनमा प्रस्तुत प्रतिवेदन

**अध्यक्ष महोदय, सल्लाहाकारज्यूहरू, प्रमुख अतिथि, अतिथिहरू, कार्यसमितिका साथीहरू र साधारण सदस्यज्यूहरू !**

सन् १९९९ मा नेपालमा स्थापना भएको नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घको पहिलो विदेश शाखाका रूपमा बेलायतमा सन् २०१३ मे महिनाको ५ तारिका दिन अल्डरसटस्थित निरमाया रोधीघरमा नेपाल आदिवासी जनजाति महासङ्घ बेलायत शाखाको रोहबरमा नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ (फोनिज) बेलायत शाखा गठन भएको हो ।

बेलायतमा रहेका सिङ्गो नेपाली समुदायलाई सूचना प्रवाह गर्नुपर्छ भन्ने उद्देश्यका साथ स्थापना भएको फोनिज युकेले बेलायतमा रहेका २७ जना आदिवासी जनजाति पत्रकारलाई सङ्गठित गरिएको जानकारी गराउँदै आगामी दिनहरूमा अझ बढी पत्रकारहरूलाई सङ्गठित गर्दै बेलायतमा रहेका नेपाली समुदायलाई सत्य र तथ्य समाचारहरू सम्प्रेसन गर्ने लक्ष्य लिइएको छ ।

बेलायतमा रहेका नेपाली समुदायसँग मिलेर कसरी सही, सत्य र विश्वासनीय समाचार सम्प्रेसन गर्न सकिन्छ भन्ने विषयमा हामीले दुईपटक कार्यसमितिको पूर्ण बैठक बस्नुका साथै टेलिफोन वार्ता, भाइबर सञ्जाल, फेसबुक सञ्जालमार्फत सदस्यहरूबीच आफ्ना विचारहरू आदान-

*बेलायतमा रहेका सिङ्गो नेपाली समुदायलाई सूचना प्रवाह गर्नुपर्छ भन्ने उद्देश्यका साथ स्थापना भएको फोनिज युकेले बेलायतमा रहेका २७ जना आदिवासी जनजाति पत्रकारलाई*

प्रदान गरेको कुरा यहाँहरूलाई जानकारी गराउन चाहन्छु । त्यसको सँगसँगै नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घका केन्द्रीय अध्यक्ष डण्ड गुरुङले मिर्गौलापीडित वरिष्ठ पत्रकार चुनबहादुर गुरुङको उपचारार्थ सहयोगको अनुरोध गरेपछि हामीले विभिन्न सहयोगदाताज्यूको सहयोगबाट एक हजार पाउन्ड आर्थिक सहयोग सङ्कलन गरी नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घमार्फत सो सङ्कलित रकम १ लाख ६७ हजार रुपैयाँ मिर्गौलापीडित पत्रकार चुनबहादुर गुरुङलाई पठायौँ ।

हामीले पत्रकारितालाई अझ प्रभावकारी बनाउनका लागि आगामी दिनहरूमा वरिष्ठ पत्रकारहरूद्वारा पत्रकारिता सम्बन्धित तालिमको व्यवस्था गराउने र बेलायतमा रहेका विभिन्न नेपाली सङ्घसंस्थाको गतिविधिलाई विभिन्न पत्रपत्रिका र अनलाइनमार्फत जनसमुदायमा पुऱ्याउनका लागि विभिन्न गतिविधिहरू सञ्चालन गरिने लक्ष्य लिएका छौँ ।

**– सचिव देवेन्द्र खेरेसद्वारा प्रस्तुत प्रतिवेदन**

# जनजाति पत्रकार महासङ्घ युकेको प्रथम अधिवेशन सम्पन्न : अध्यक्षमा लिम्बू

**एटा समाचारदाता**

**अल्डरसट ।** गत २९ जुन २०१७ का दिन नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ (फोनिज) बेलायतको अल्डरसटस्थित भेटघाट रेस्टुरेन्टमा प्रथम ऐतिहासिक अधिवेशन सम्पन्न भयो । सो अधिवेशनले आगामी ३ वर्ष कार्यकालका लागि किरण टी लिम्बूको अध्यक्षतामा विश्वासदीप तिगेला उपाध्यक्ष, प्रमिला राई सचिव, नगेन्द्रराज नेम्वाङ सहसचिव, विधता राई कोषाध्यक्ष र सदस्यहरूमा मिलन तमु, सविन्द्रकुमार गुरुङ, देवेन्द्र खेरेस, भावना परिस्कृत राई, पुष्पा गुरुङ, जानुका राई र हरिमान गुरुङ चयन भएका छन् ।

नेपाल आदिवासी जनजाति महासङ्घ बेलायतका अध्यक्ष श्रीप्रसाद लिम्बूको प्रमुख आतिथ्यमा सम्पन्न भएको सो कार्यक्रममा नेपाली आदिवासी जनजाति महिला महासङ्घका अध्यक्ष कमला थापा, नेपाल पत्रकार महासङ्घ बेलायतका अध्यक्ष चिरन शर्मा र एभरेस्ट टाइम्सका सम्पादक एवं फोनिज युकेको सल्लाहकार हरि कुमार (काजी) गुरुङले अधिवेशनको सफलताको शुभकामना मन्तव्य दिएका थिए ।

कार्यक्रममा सचिव देवेन्द्र खरेसले कार्यसमितिको साङ्गठनिक प्रतिवेदन र कोषाध्यक्ष विधता राईले कोषाध्यक्षले आय-व्यय प्रस्तुत गरेका थिए । सो दुवै प्रतिवेदन सर्वसहमत पारित भएको थियो ।

सो अधिवेशनले एकेन्द्र गुरुङको अध्यक्षतामा नरेश काङमाङ सदस्य सचिव र हरिकुमार (काजी) गुरुङ सदस्य रहेको निर्वाचन मण्डल चयन गरेको थियो । सो मण्डलले नवनिर्वाचित पदाधिकारी एवं सदस्यहरूलाई खादा लगाई बधाई दिएका थिए । सो अवसरमा नवनिर्वाचित अध्यक्ष लिम्बूले आदिवासी जनजातिहरूको हक, अधिकारका बारेमा फोनिज सधैँ अघि बढ्ने प्रतिबद्धता

